

# नेपाल गजेट

## भाग २

श्री ५ को सरकारद्वारा प्रकाशित

काठमाडौं फाल्गुण १ गते २०१५ साल

श्री ५ को सरकार

### कानून तथा संसदीय प्रबन्ध मन्त्रालय

श्री ५ महाराजाधिराजबाट बनाइबक्सेको तललेखिए बमोजिमको ऐन सर्वसाधारणका जानकारीका लागि प्रकाशित गरिएको छ।

स्वस्ति श्री गिरिराज चक्रचूडामणि नरनारायणेत्यादि विविध विरुदावली विराजमान मानोन्नत ओजस्वि राजन्य प्रोज्ज्वल नेपालतारा अति ओजस्वि त्रिभुवन प्रजातन्त्र श्रीपद ॐरामपट्ट अतुलज्योतिर्मय त्रिशक्तिपट्ट अतिप्रवल गोरखादक्षिणबाहु महाधिपति फिल्डमार्शल र सर्वोच्च कम्याण्डर इनचीफ श्री मन्महाराजाधिराज श्री श्री श्री महाराज महेन्द्र वीर विक्रम जङ्गबहादुर शाहबहादुर शमशेर जङ्ग देवानाम् सदा समर विजयिनाम्।

२०१५ सालको ऐन नं २१

# नेपाल अधिराज्यको राजगद्दीको उत्तराधिकार क्रम निश्चित गर्ने व्यवस्थाको निर्मित्त बनेका

# ऐन

श्री ५ बडामहाराजा पृथ्वीनारायण शाहदेवबाट सार्वभौम सत्ता सम्पन्न स्वतन्त्र एवं सुसंगठीत नेपाल अधिराज्य कायम गरिबक्सेपछि नेपालको राजगद्दीमा मौसूफ र मौसूफका उत्तराधिकारी राज हुंदै आइबक्सेको र उक्त राजगद्दीको उत्तराधिकार क्रम श्री ५ बडामहाराजा पृथ्वी नारायण शाह तथा राष्ट्रपिता श्री ५ महाराजाधिराज त्रिभुवन वीर बिक्रम शाहदेवका आर्य संस्कृतिका अनुयायी वंशजमा सिमित होस भन्ने हेतुले राजगद्दी उत्तराधिकार सम्बन्धी रीत परम्परा र कानूनलाई एकत्रित गरी अझ स्पष्ट गर्न आवश्यक देखिएकोले श्री ५ महाराजाधिराजबाट मन्त्रि–परिषद्का सल्लाह अनुसार यो ऐन बनाइ जारी गरिबक्सेको छ।

१. संक्षिप्त नाम र प्रारम्भः– [१] यस ऐनको नाम राजगद्दी उत्तराधिकार सबन्धी ऐन; २०१५ रहेको छ

[२] यो ऐन तुरुन्त प्रारम्भ हुनेछ।

२. परिभाषाः– विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा.—

[१] "छोरा" भन्नाले रित पूर्वक विवाहिता पटबन्धा महारानीबाट पैदा होइबक्सेको छोरालाई सम्झनु पर्छ र भाइ र बंशज शब्दहरूको पनि सोही बमोजिम अर्थ लगाइनेछ।

[२] "राजगद्दी" भन्नाले सार्वभौमसत्ता सम्पन्न नेपाल अधिराज्यको राजगद्दी सम्झनु पर्छ।

[३] "शाहवंश" भन्नाले सम्वत् १८२५ देखि राजगद्दीमा राजहोइबक्सेको हिन्दु धर्मावलम्बी श्री ५ महाराजाधिराजका बंश सम्झनु पर्छ।

[४] "श्री ५" भन्नाले गद्दी नसीन श्री ५ महाराजाधिराजलाई सम्वोधन गरेको सम्झनु पर्छ।

३. शक्तिको श्रोत:— सार्वभौमसत्ता सम्पन्न नेपाल अधिराज्यको पवित्र राजगद्दीमा राज हाइबक्सेको श्री ५ सर्व शक्तिमान तथा सर्व शक्तिको एकमात्र श्रोत होइबक्सनेछ ।

४. राजगद्दीमा हक:— यस ऐनमा भएका व्यवस्थाको अधिनमा रही शाहवंशको मात्र राजगद्दीमा हक हुनेछ ।

५. राजगद्दी उत्तराधिकारीको क्रम:— [१] श्री ५ पछि राजगद्दी उत्तराधिकारी मौसूफका जेठा छोरा होइबक्सनेछ र मौसूफका जेठा छोरा राजगद्दीमा विराजमान भइबक्सेन भने पनि मौसूफका छोरा होइबक्सन्छ भने श्री ५ का अन्य छोरा होइबक्से पनि उत्तराधिकारी जेठा छोराको जेठा छोरा नै राजगद्दी उत्तराधिकारी होइबक्सनेछ । एवं रित छोरा छोरामा जेठा जेठाको राजगद्दी उत्तराधिकारी होइबक्सने प्रथम हक हुनेछ ।

[२] श्री ५ का जेठा छोराको देहावसान राजगद्दीमा राज नहोइ बक्सदै भयो र मौसूफको छोरा होइबक्सेन भने श्री ५ का अन्य छोरामा जेठा राजगद्दी उत्तराधिकारी होइबक्सने क्रम हुनेछ र मौसूफ उत्तराधिकारी होइबक्से पछि उपदफा [१] का क्रम मौसूफको छोरामा लागू हुनेछ ।

[३] श्री ५ को राजगद्दी उत्तराधिकारी जेठा छोरा होइबक्सदै उत्तराधिकारी नभएका अन्य कुनै छोराको देहावसान होइबक्स्यो र मौसूफको छोरा होइबक्सिन्छ, त्यस्तैमा राजगद्दी उत्तराधिकारी जेठा छोराको पनि देहावसान भयो र मौसूफका छोरा छैनन भने अगावै देहावसान हुने अरू छोराका छोरा भएपनि राजगद्दीको उत्तराधिकारी श्री ५ का छोरा नै होइबक्सनेछ ।

[४] श्री ५ का राजगद्दी उत्तराधिकारी जेठा छोरा छँदै देहावसान भइबक्सेको अन्य छोराका छोरा पैदा भइबक्सेका छ र त्यसपछि छोरा नहुँदै जेठा छोरा तथा अन्य छोरा समेतको देहावसान भयो भने अन्य छोराका छोरामा सबै भन्दा जेठा छोरा राजगद्दी उत्तराधिकारी होइबक्सनेछ र यही रित र क्रम त्यस पछिको पिडिमा पनि लागू हुनेछ ।

[५] श्री ५ का छोरा वा छोरा पट्टिका नाती पनाती नभए मौसूफका भाई र भाई पनि नभए छोरा पनि नभए भाईका छोराका छोरा पनि नभए भाईका नाती पनाती राजगद्दीको उत्तराधिकारी होइबक्सनेछ ।

[६] उपदफा [१], [२], [३], [४] र [५] मा लेखिएबमोजिम कोही नभएमा शाहबंश भित्रका सबै भन्दा नजिकका अन्य हकदार राजगद्दी उत्तराधिकारी होइबक्सनेछ ।

[७] श्री ५ का भाई वा भाईका छोरा वा नाती वा पनाती वा अन्य हकदार राजगद्दीको उत्तराधिकारी हुनेमा भाई बा भाईका छोरा बा नाती वा पनाती बा अन्य हकदारमा पनि समान स्थानमा जेठाको नै प्रथम हक हुनेछ ।

[८] श्री ५ का छोरा नहुँदै राजगद्दी रिक्त हुन गई मौसूफका भाइ बा भाइका छोरा बा नाती बा पनाती बा अन्य हकदार राजगद्दीमा विराज होइबक्सने अवस्था परि आएमा राजगद्दी रिक्त छाडी बक्सने श्री ५ का पटबन्धा महारानीले गर्भ धारण गरिबक्सेको छ बा छैन भन्ने निर्णयका लागि मौसूफ पटबन्धा महारानी राजगद्दीमा राज भइबक्सने छ र पटबन्धा महारानीको गर्भबाट राजगद्दी रिक्त भएको १० महीना भित्र छोरा पैदा भइबक्सेमा मौसूफ छोरा नै राजगद्दीमा विराज गरिबक्सनेछ ।

[९] श्री ५ का राजगद्दी उत्तराधिकारी छोराको देहाबसान मौसूफको छोरा पैदा नहुँदै भयो बा मौसूफ उत्तराधिकारी हकबाट बन्चीत भइबक्स्यो र मौसूफका बिबाहिता महारानी होइबक्सिन्छ भने मौसूफ महारानीले गर्भधारण गरिबक्सेको छ छैन भन्ने निर्णय भई नसकि अर्को व्यक्ति उत्तराधिकारी मानिने छैन उत्तराधिकारीका महारानीबाट उत्तराधिकारी देहाबसान भएका बा बन्चीत भएको १० महीना भित्र छोरा पैदा भइबक्सेमा गद्दी नसीन श्री ५ का अरू छोरा भए पनि राजगद्दी उत्तराधिकारी हक उत्तराधिकारीको पछि पैदा भइबक्सेको छोरा कै हुनेछ ।

[१०] श्री ५ का राजगद्दी उत्तराधिकारी छोराको देहाबसान मौसूफको छोरा पैदा नहुँदै भयो बा मौसूफ राजगद्दी उत्तराधिकारी हकबाट बन्चीत भइबक्स्यो

556

र सो भएको १० महीना नपुग्दै राजगद्दी रिक्त हुन आयो भने उत्तराधिकारीको महारानीले गर्भधारण गरिबक्सेका छ छैन भन्ने निर्णय नभएसम्म राजगद्दी रिक्त छाडी बक्सने श्री ५ का अन्य छोरा वा अन्य छोराका छोरा भएपनि राजगद्दीमा राजगद्दी रिक्त गरिबक्सने श्री ५ का पटबन्धा महारानी राज भइबक्सने छ र १० महीनाभित्र राजगद्दी उत्तराधिकारीको छोरा पैदा भइबक्सेमा राजगद्दीमा त्य-सरी पैदा भइबक्सेको उत्तराधिकारीका छोरा नै विराजमान भइ गद्दी नसीन श्री ५ होइबक्सने छ ।

६. राज्याभिषेक परम्परानुसार हुनेः— श्री ५ को शुभराज्याभिषेक तथा पर्व र उत्सवहरू राष्ट्रीय आर्य संस्कृति परम्परा अनुसार सुसम्पन्न हुनेछ ।

७. युबराजधिराज घोषित हुनेः— श्री ५ बाट अन्यथा विचार गरी बक्सेमा बाहेक उत्तराधिकारी कायम हुन आएको वंशजलाई श्री ५ बाट श्री ५ युवराजधिराज भनी घोषणा गरी बक्सने छ ।

८. धर्मपुत्रः— [१] श्री ५ का छोरा नभई धर्मपुत्र राख्ने इच्छा गरिबक्सेमा मौ-सूफर्पाञ्‌ राजगद्दीमा राज हुन हक पुग्ने सबैभन्दा नजिकको हकदारलाई मन्त्रि-मण्डलको सल्लाह ली धर्मपुत्र राखिबक्सनेछ ।

तर नाताका हैसियतले मान्नुपर्ने आफु भन्दा पहिला पिढिको व्यक्ति धर्म पुत्र हुने छैन र धर्म पुत्र हुने भन्दा नजिकको अर्को हकदार भएको अव स्थामा धर्मपुत्र भएको नाताले मात्र राजगद्दीमा हक पुग्ने छैन ।

[२] श्री ५ बाट धर्मपुत्र राखिबक्सेपछि मौसूफका पटबन्धा महारानीबाट छोरा पैदा भइबक्स्यो भने राजगद्दी उत्तराधिकारी हक छोराकै हुनेछ ।

[३] उपदफा [१] को रित बमोजिम धर्मपुत्र हुनेलाइ सोही उपदफा [१] र [२] को अधिनमा रही श्री ५ का छोरा सरह हक प्राप्त हुनेछ !

९. राजगद्दीमा राजहुन नहुने अवस्थाः— निम्नलिखित अवस्थामा श्री ५ रा-जगद्दीमा राज गरिबक्सने छैनः—

[क] हिन्दू धर्ममा नरहेमा ।

[ख] कुनै विदेशी राष्ट्रको नागरिक भइबक्सेमा ।

१०. उत्तराधिकारीलाई वन्चित गर्न सकिने अवस्था:– [१] कुनै वंशजका सन्बन्धमा निम्नलिखित बमोजिम भएको छ भन्ने कुरा श्री ५ बाट मन्त्रिमण्डलको सलाह लिई ठहऱ्याई बक्सेमा त्यस्तो वंशज राजगद्दीको उत्तराधिकारीबाट बन्चित गर्ने गरी मौसूफबाट लालमोहरद्वारा शाही आदेश जारी गर्न सकिबक्सनेछ र त्यस्तो आदेश जारी भएपछि सोही बमोजिम उक्त वंशज राजगद्दीको उत्तराधिकारबाट बन्चित गरिनेछ ।

[क] हिन्दू धर्ममा नरहेको वा

[ख] कुनै विदेशी राष्ट्रको नागरिक भएको वा

[ग] श्री ५ को पूर्व अनुमति विना निजले विबाह गरेको रहेछ र सो विबाहलाई स्वीकृति दिन राष्ट्रहीतको दृष्टिले मनासिब रहेनछ, वा

[२] त्यस्तो प्रत्येक आदेशलाई नेपाल गजेटमा प्रकाशित गरिनेछ ।

[३] यस दफा अन्तर्गत जारी गरिएका शाही आदेशलाई ऐनले बाहेक खारेज वा हेरफेर गर्न सकिने छैन।

[४] यस दफा बमोजिम श्री ५ बाट जारी गरिबक्सेको कुनै आदेश उपर कुनै अदालतमा प्रश्न उठाउन सकिने छैन ।

११. राजपरिवार:– समय समयमा नेपाल अधिराज्यको राजगद्दीमा राज होईबक्सेको श्री ५ महाराजाधिराजको सन्तानमा मौसूफ सहित चारपुस्ता सम्मका सदस्यलाई राजपरिवार भनिनेछ ।

१२. शाहेबज्यू दर्जा बक्सने:– राजपरिवार देखि बाहेकका शाहबंशका कुनै व्यक्तिलाई श्री ५ बाट शाहेबज्यूको दर्जा प्रदान गर्न सकिबक्सनेछ ।

१३. राजपरिवारको सदस्यताबाट निष्कासित गर्न र शाहेबज्यूको दर्जाबाट झिक्न सकिने अवस्था:– तत्काल राजपरिवारका सदस्य रहेका वा शाहेबज्यूको

५८९

दर्जा पाएका कुनै व्यक्ति खराब आचरणको हुन गएको छ भन्ने कुरा श्री ५ को स्वविवेकमा लागेमा मौसूफबाट त्यस्ता व्यक्तिलाई क्रमशः राजपरिवारको सदस्यताबाट निष्कासित गर्न वा शाहबज्यूको दर्जाबाट झिक्न सकिबक्सनेछ ।

१४. अदालतको अधिकार नहुने:— कुनै काम कारवाई यो ऐनबमोजिम भएको हो होइन भन्ने कुरामा सोधपुछ गर्ने अधिकार कुनै अदालतलाई हुनेछैन ।

१५. परम्परा र रित बमोजिम हुने:- राजगद्दी तथा राजगद्दी उत्तराधिकारीको सम्बन्धमा यस ऐनमा लेखिएको कुराजति यही बमोजिम र यसमा नलेखिएको अन्य कुरा शाह बंशमा चलिआएको बंशानुक्रम परम्परा तथा रित बमोजिम हुनेछ ।

१६. सजाय:— श्री ५ महाराजाधिराज मौसूफका गाथगद्दी ताक्ने र अरू षडयन्त्र गर्ने गराउने र चेष्टा गर्ने राजपरिवारका भए श्री ५ महाराजाधिराजबाट हुकुम बक्से बमोजिम दण्ड सजाय गर्ने गराउने र अरू जुनसुकै जातको भएपनि त्यस्तो व्यक्तिलाई मृत्यु दण्ड दिइनेछ ।

१७. खारेजी:— राजगद्दी सम्बन्धी यस अघिका कानून खारेज गरिएकोछ ।

आज्ञाले—
नयनबहादुर खत्री क्षत्री,
श्री ५ का सरकारका सचिव
कानून तथा संसदीय प्रबन्ध मन्त्रालय,

गोरखापत्र छापाखानामा मुद्रित ।